


# पुरानो ओढ्नेको के भयो ?

**Author:** Arvind Gupta
**Illustrator:** Debasmita Dasgupta
**Translator:** Anbika Giri

Level 3



एक दिन गौतम बुद्ध गुम्बामा
टहलिँदै हुनुहुन्थ्यो ।

एक जना भिक्षु उहाँ नजिक आएर
एउटा नयाँ उनीको ओढ्ने मागे ।



“तिम्रो पुरानो ओढ्ने के भयो ?” बुद्धले सोध्नुभयो ।

“त्यो एकदमै पुरानो भयो । च्यातिएको पनि छ । त्यसैले मैले त्यसलाई तन्ना बनाएर ओछ्याएको छु ।” भिक्षुले भने ।



“तर, तिम्रो तन्ना के भयो र ओढ्नेलाई तन्ना बनाएर ओछ्यायौ ?” बुद्धले फेरि सोध्नुभयो ।

“गुरू ! तन्ना ओछ्याउँदा ओछ्याउँदा साह्रै पुरानो भयो । धेरै ठाउँमा च्यातियो पनि । त्यसैले मैले त्यसलाई काटेर सिरानीको खोल बनाएको छु ।” भिक्षुले जबाफ दिए ।



“सिरानीको खोल त छँदै थियो होला ! पुरानो सिरानीको खोलको के गऱ्यौ नि ?” बुद्धले सोध्नुभयो ।

“लाखौँचोटि मेरो टाउको मडारिँदा मडारिँदा पुरानो सिरानीको खोलमा ठुलो भ्वाङ भयो । त्यसैले मैले त्यसलाई खुट्टा पुछ्ने बनाएको छु ।” भिक्षुले विनम्रतासाथ भने ।



गौतम बुद्धलाई भिक्षुको कुराले अझै चित्त बुझेको थिएन । उहाँ अझै कुराको जान चाहनुहुन्थ्यो ।

“तिमीले खुट्टा पुछने पुरानो टालोचाहिँ के गऱ्यौ ?” बुद्धले भिक्षुलाई अझै केर्नुभयो ।



भिक्षुले हात जोड्दै भने— “गुरू, त्यो टालो पूरै च्यातिइसकेको थियो । खुट्टा पुछता पुछता त्यसका धागाका रेसासमेत निस्किसकेका थिए । मैले ती रेसाहरूको बत्ती बनाए र दियो जलाएँ ।”

भिक्षुको कुरा सुनेर बुद्ध मुस्कुराउनुभयो । अनि ती भिक्षुले नयाँ ओढ्ने पाए ।



## कपडाको भकुन्डो बनाउनुस्

1.

१. पुनः प्रयोग गर्न मिल्ने पुराना कपडा जम्मा गर्नुहोस् । विभिन्न रङ्गका ती कपडाका दुई टुक्रा पञ्चकोणमा र पाँच टुक्रा लाउरे फूलको पत्र जस्तो आकारमा चित्रमा देखाए जस्तै गरी काट्नुहोस् ।

२. अब यिनीहरूलाई आपसमा जोडेर सियो, धागोले सिउनुहोस् । अथवा ठुलो मान्छेलाई भनेर मेसिनमा सिलाइमाग्नुहोस् । एउटा पञ्चकोणको टुक्रामा प्वाल पार्नुहोस् ।



2.




३. अब त्यसलाई उल्टाएर सिइएको भाग भित्रतिर पार्नुहोस्

।

४. त्यसभित्र एउटा दह्रो खालको बेलुन राख्नुहोस्
र त्यसलाई फुक्नुहोस् ।






५. बेलुनको मुख बाँध्नुहोस् र कपडाभित्रै घुसारिदिनुहोस् ।

६. वाह ! तपाईंको रङ्गीबिरङ्गी कपडाको भकुन्डो तयार भयो ।





1.

## धागोको कमाल

यहाँ एउटा सजिलो उपाय छ, जसले धागोको लहरोसँग रमाइलो गर्दै खेल्न सिकाउँछ ।

१. सलाईको एउटा खाली बट्टा लिनुहोस् ।

२. लगभग ७० सेन्टिमिटर लामो धागो सलाइको बट्टाको एउटा कुनाबाट अर्को कुनामा पुग्ने गरी घुसार्नुहोस् ।



2.




३. अर्को कुनाबाट उत्तिनै लम्बाइको अर्को
धागो त्यसै गरी छिराउनुहोस् र
दुवैतिरको टुप्पोलाई

रङ्गको
दुवैको
आपसमा बाँध्नुहोस् ।

४. आफ्नो कुनै साथीलाई धागोको दुवै टुप्पो पक्रन भन्नुहोस् ।
तपाईं बिस्तारै सलाइको बट्टा खोल्नुहोस् र बन्द गर्नुहोस् ।






छक्क पर्नुभयो हैन त !

सलाईको बट्टाबाट बाहिर निस्कँदा धागोको रङ्ग बदलिँदै छजस्तो लाग्छ, हैन त !

यस्तै अरू रमाइला खेलका लागि

www.arvindguptatoys.com मा जानुहोस् ।



## पुनः प्रयोग गर्नुहोस् ! फोहोर कम पार्नुहोस् !

हामी सामान किन्छौँ । प्रयोग गर्छौं । अनि केही नसोची त्यसलाई फ्याँक्छौँ । हामी आफूलाई चाहिनेभन्दा धेरै सामान किन्छौँ । घरी घरी त लाग्छ, हाम्रो मन्त्र नै 'धेरै किनौँ, धेरै फ्याँकौँ' भन्ने हो ।

हामी पानी, रूखबिरूवा, बालुवा, माटो जस्ता प्राकृतिक स्रोतको दुरूपयोग गर्छौं । टनका टन फोहोर बनाउँछौँ, जसले ठाउँ ठाउँमा फोहोरको पहाडै बन्दै गएको छ ।



यो कथा २५०० वर्षअगि भगवान् गौतम बुद्धको समयको हो । यो कथामा वस्तुको पुनः प्रयोगबारे गहिरो सुझबुझ देखाइएको छ । यो कथाले हामीलाई धेरै कुरा सिकाउँछ ।

storyweaver PRATHAM BOOKS

This book was made possible by Pratham Books' StoryWeaver platform. Content under Creative Commons licenses can be downloaded, translated and can even be used to create new stories - provided you give appropriate credit, and indicate if changes were made. To know more about this, and the full terms of use and attribution, please visit the following link.

Images Attributions:

Page 11: Two round objects made of pieces of cloth, by Debasmita Dasgupta © Pratham Books, 2016. Some rights reserved. Released under CC BY 4.0 license. Page 12: Two square objects , by Debasmita Dasgupta © Pratham Books, 2016. Some rights reserved. Released under CC BY 4.0 license. Page 13: Two matchboxes with thread entwined in them, by Debasmita Dasgupta © Pratham Books, 2016. Some rights reserved. Released under CC BY 4.0 license. Page 14: A matchbox with two threads inserted in it, by Debasmita Dasgupta © Pratham Books, 2016. Some rights reserved. Released under CC BY 4.0 license. Page 15: A monk thinking about the waste humans produce , by Debasmita Dasgupta © Pratham Books, 2016. Some rights reserved. Released under CC BY 4.0 license. Page 16: A monk sitting in lotus position, by Debasmita Dasgupta © Pratham Books, 2016. Some rights reserved. Released under CC BY 4.0 license.

Disclaimer: https://www.storyweaver.org.in/terms_and_conditions




Some rights reserved. This book is CC-BY-4.0 licensed. You can copy, modify, distribute and perform the work, even for commercial purposes, all without asking permission. For full terms of use and attribution, http://creativecommons.org/licenses/by/4.0/

# पुरानो ओढ्नेको के भयो ?

(Nepali)

यो गौतम बुद्धको पालाको कथा हो । यसले हामीलाई सामानको पून: प्रयोगबारे चाखलाग्दो कथाका माध्यमबाट सिकाउँछ ।

This is a Level 3 book for children who are ready to read on their own.




Pratham Books goes digital to weave a whole new chapter in the realm of multilingual children's stories. Knitting together children, authors, illustrators and publishers. Folding in teachers, and translators. To create a rich fabric of openly licensed multilingual stories for the children of India and the world. Our unique online platform, StoryWeaver, is a playground where children, parents, teachers and librarians can get creative. Come, start weaving today, and help us get a book in every child's hand!